आलेख

# स्मृतिग्रन्थ : प्रारम्भिक मिमांशा



◆ हर्षमान महर्जन



हुन त स्मृतिग्रन्थ धेरैले सेवाभावले नै सम्पादन गर्छन् तर अहिले स्मृतिग्रन्थ निकाल्ने काम व्यावसायिक रूपमै पनि भएको देखिन्छ । यदि परिवारले चाहेमा स्मृतिग्रन्थ तयार गर्ने र यसमा लागेको श्रमको उचित मूल्य पनि लिने क्रम सुरु भएको छ । यो चलन कति व्याप्त छ ? यसको राम्रो र नराम्रो पक्षबारे अझ अध्ययनको खाँचो छ ।



समय समयमा पत्रपत्रिकामा स्मृतिग्रन्थ लोकार्पणको समाचार छापिने गरेको छ । यस्ता कार्यक्रममा सम्बन्धित व्यक्तिले समाजमा गरेको योगदानको चर्चा हुने गर्छ । फेरि यस्ता धेरै स्मृतिग्रन्थ बजारमा आउँदैनन् पनि । निरन्तर प्रकाशन भइरहने यस्तो प्रकाशनको बारे खासै अनुसन्धान भएको पाइँदैन । त्यसैले यस लेखमा यस्तो सानो जमर्को गरिएको छ । यो प्रारम्भिक मिमांशा हो ।

## शब्द र अर्थ

हुन त स्मृतिग्रन्थ शब्द पनि फरक फरक तरिकाले लेखको पाइन्छ । कसैले 'स्मृतिग्रन्थ' लेखेका छन् । अरूले 'स्मृति–ग्रन्थ' या 'स्मृतिग्रन्थ' पनि लेखिएको छ । कसैले शीर्षकमा 'सम्झना', 'स्मृति', 'मारिका' जस्ता शब्द जोडेका छन् । कसैले यो पनि जोडेको छैन ।

जे लेखिए पनि यसको अर्थ एउटै देखिन्छ । कसैको स्मृतिमा सामूहिक रूपमा जीवनका विभिन्न पाटोबारे लेख्नु नै स्मृतिग्रन्थ हो हुन त नेपाल बृहत् शब्दकोशमा स्मृतिग्रन्थको दुई वटा अर्थ दिइएको छ– १. 'स्मरणका निमित्त लेखिएको ग्रन्थ वा कुनै महत्त्वपूर्ण घटना वा विशिष्ट व्यक्तिको योगदानका सम्पूर्ण पक्षलाई लिएर लेखिएको ग्रन्थ' २. 'मनुस्मृतिसम्बन्धी ग्रन्थ' ।

पहिलो अर्थका रूपमा यस लेखमा स्मृतिग्रन्थलाई बुझिएको छ । यस क्रममा कसैको सम्झनामा एक वा केही व्यक्तिले लेखेको संस्मरणात्मक पुस्तकलाई यहाँ चर्चा गरिएको छैन । यसरी बितेको व्यक्तिबारे एक वा दुई जना व्यक्तिको सम्झना पुस्तकका रूपमा प्रकाशित भएका छन् ।

## इतिहास

नेपालमा कहिलेदेखि स्मृतिग्रन्थ छापियो ? यस प्रश्नको उत्तर दिन सजिलो छैन । अहिलेसम्मको प्रमाणले विसं २०२७ असारमा श्री ५ त्रिभुवन–स्मृतिग्रन्थ प्रकाशित भएको देखिन्छ । २०११ मा बितेका राजा त्रिभुवनबारे त्यसबेला त्रिभुवन स्मारक समितिले यो स्मृतिग्रन्थ प्रकाशित गरेको थियो । सम्भवतः स्मृतिग्रन्थ निर्माणको प्रचलन भारतबाट भएको हुनु पर्छ । भारतका विभिन्न पुस्तकालयको अनलाइन क्याटेलगमा धेरै अघि नै प्रकाशित भएको देखिन्छ । उदाहरणका लागि कलकत्ताबाट हिन्दीमा २००६ सालमै मीरा स्मृतिग्रन्थ प्रकाशित भएको देखिन्छ । भारतमा देखेर नै यो काम भएको हुनु पर्छ । २०११ चैतमा गठन गरिएको केशर शमशेर अध्यक्ष भएको र खड्गमान सिंह, मातृकाप्रसाद कोइराला, सुवर्ण शमशेर, डिल्लीरमण रेग्मी, सिद्धिचरण श्रेष्ठ, दयावीर सिंह कंसाकार, प्रेमबहादुर कंसाकार र भद्रकाली मिश्र सदस्य रहेको त्रिभुवन स्मारकसमितिको मुख्य काम जयन्ती समारोह मनाउनु थियो र यसका लागि श्री ५ को सरकारबाट वार्षिक रूपमा आर्थिक सहयोग प्राप्त हुन्थ्यो । अध्ययनका क्रममा भारतमा देखेको चलनलाई नेपालमा पनि सुरु गर्ने प्रयास यस स्मारक समितिले गरेको हुनु पर्छ ।

२०२७ पछि बिस्तारै यस्तो प्रकाशनको सङ्ख्या बढ्यो । मैले तयार गरेको स्मृतिग्रन्थसम्बन्धी एउटा सूचीमा नेपालबाट पाँच सयभन्दा बढी यस्ता सामग्री प्रकाशित भएको देखिन्छ । यो सूची अपूरो छ भन्नेमा म अवगत छु किनभने यसमा नेपाली, नेपाल भाषा र अङ्ग्रेजीमा प्रकाशित स्मृतिग्रन्थ मात्र सङ्कलित छन् । नेपालका अरू भाषाबाट पनि यस्ता पुस्तक प्रकाशित भइरहेको हुनु पर्छ । यति हुँदाहुँदै पनि यस

सूचीका आधार र केही स्मृतिग्रन्थको अध्ययनबाट नेपालबाट प्रकाशित भएका स्मृतिग्रन्थको केही विशेषताको चर्चा गर्न सकिन्छ।

## समय सीमा

स्मृतिग्रन्थ कहिले प्रकाशित हुन्छ ? व्यक्तिको मृत्यु भएको समयपछि जुनै बेला यस्तो सामग्री प्रकाशित हुन सक्छ।

राजामहाराजाको स्मृतिग्रन्थ हेर्दा यो प्रष्ट हुन्छ। त्रिभुवन स्मृतिग्रन्थ मृत्युको १६ वर्षपछि प्रकाशित भएको हो। त्यो पनि उनको जन्म दिवसको उपलक्ष्यमा। सत्यमोहन जोशीले सम्पादन गरेको महेन्द्र–स्मृति–ग्रन्थ उनको प्रथम पुण्यतिथिको उपलक्ष्यमा प्रकाशित गरिएको छ। राजा वीरेन्द्रबारे भने तीन वटा स्मृतिग्रन्थ प्रकाशित भए। पहिलो र दोस्रो उनको प्रथम वार्षिक पुण्यतिथि २०५९ असार ६ को उपलक्ष्यमा प्रकाशित भएका थिए। स्व. श्री ५ वीरेन्द्र : सम्भना र श्रद्धाञ्जली स्मृतिग्रन्थ प्रकाशन समितिले स्व. श्री ५ वीरेन्द्र : सम्भना र श्रद्धाञ्जली (स्मृतिग्रन्थ) र नेपाल कला प्रतिष्ठानले श्री ५ वीरेन्द्र स्मृतिग्रन्थ प्रकाशित गर्‍यो। त्यस्तै २०६० भाद्रमा सूचना विभागले श्रद्धाका केन्द्र : श्री ५ वीरेन्द्र (स्मृतिग्रन्थ) प्रकाशित गर्‍यो। एकातिर राजा त्रिभुवनको स्मृतिग्रन्थ उनको जन्मोत्सवमा प्रकाशित भयो भने अरू दुई राजाको भने उनीहरूको पुण्य तिथिमा।

राजनीतिक नेताको स्मृतिग्रन्थ हेर्दा पनि त्यस्तै देखिन्छ। उदाहरणका लागि २०५० जेठ ३ मा मृत्यु भएको नेता मदन भण्डारीका बारे जननेता भण्डारी २०५१ जेठ ६ मा प्रकाशित भएको थियो। मृत्यु भएको १५ वर्षपछि मदन भण्डारी स्मृति प्रतिष्ठान नेपालले मदन भण्डारी स्मृतिग्रन्थ (पहिलो भाग) प्रकाशित गरेको थियो। त्यही किताबको प्रकाशकीयमा दोस्रो भागका लागि लेखरचना र सामग्री उपलब्ध गराउन अनुरोध पनि गरिएको थियो। तद्अनुसार २०७९ मा दोस्रो भाग प्रकाशित भइसकेको छ।

यसरी धेरै वटा स्मृतिग्रन्थ प्रकाशित भएका पात्रलाई हेर्दा यस्ता प्रकाशन मृत्यु भइसकेपछि जुनै बेला पनि प्रकाशन गर्न सकिने देखिन्छ। तर यसरी किन कुनै व्यक्तिको एउटा पनि स्मृतिग्रन्थ प्रकाशित हुँदैन तर अरूको भने धेरै वटा प्रकाशित हुन्छ भविष्यको अनुसन्धानको विषय हो।

## स्मृति पात्र

सुरुमा प्रकाशित स्मृतिग्रन्थको सूची हेर्दा समाजमा 'ठुलै' योगदान पुर्‍याएका व्यक्तिको प्रकाशित गरेको देखिन्छ। राजामहाराजाको चर्चा माथि नै गरिसकिएको छ। मैले बनाएको सूचीमा २०४५ सम्म राजनीतिज्ञ वा साहित्यकारको स्मृतिग्रन्थ प्रकाशित भएको देखिन्छ। २०३७ मा 'असीम' संस्मरण ग्रन्थ र २०३९ सालमा पहमालनसिंह स्वाँर स्मृति–ग्रन्थ र मोती स्मृतिग्रन्थ प्रकाशित भए। २०४१ मा चन्द्रधर उप्रेती : स्मृति–ग्रन्थ, २०४२ मा भीमनिधि तिवारी स्मृतिग्रन्थ (१), २०४४ मा सूर्यविक्रम ज्ञवाली स्मृतिग्रन्थ र श्री माधवप्रसाद देवकोटा स्मृतिग्रन्थ र २०४५ मा वासुदेव भट्टराई : स्मृतिग्रन्थ प्रकाशित भए। २०४६ सालपछि लामो समयसम्म यस्तो मान्यता रहेको देखिन्छ। त्यसबेला पनि राजनीतिज्ञ, शिक्षक, पत्रकार, सहिद नै यस्ता स्मृतिग्रन्थका पात्र भए। हुन पनि माथि उल्लेख गरिएको शब्दकोशको अर्थले पनि 'विशिष्ट व्यक्तिको योगदानका सम्पूर्ण पक्षलाई' उजिल्याउने प्रयास स्मृतिग्रन्थले गर्छ।

२०६० को दशकमा भने अलिक फरक प्रकारको स्मृतिग्रन्थ प्रकाशित भए। उनीहरूको पात्र पनि अलिकति फरक भए। उदाहरणका लागि २०६४ माघ प्रकाशित भएको आमा : मनको मझेरीबाट पुस्तक। यो पुस्तक २०६३ माघ ७ मा बितेका सुतलीमाया शाक्यको बारेमा हो। यसमा मुख्यतः सुतलीमाया शाक्यको मृत्युपछि उनको स्मृतिमा गरिएका दान दातव्यको विवरण छ। तर उनको सम्भनामा केही व्यक्तिको छोटो (एक अनुच्छेद) को पाठ पनि राखिएको छ। यस्तै अर्को उदाहरणका हो २०७३ मा 'माइती मावलीका तर्फबाट आरके राई र सचिन राई शेर्पा'ले प्रकाशित गरेको सम्भनामा आमा : स्मृतिग्रन्थ। यो स्मृतिग्रन्थ १९९८ मा जन्मेकी भगत कुमारी राईको बारेमा हो। हुन त उनी सामाजिक रूपमा सक्रिए नै थिइन्। पुस्तकमा उल्लेख भए अनुसार उनी जिरामुनी भीमसेन समूह, किरात राई यायोक्खा, नेपाल रेडक्रस सोसाइटी, नेपाल ज्येष्ठ नागरिक संरक्षण सङ्घ, नेपाल महिला सङ्घ, दिल्पा सहकारी, सरस्वती महिला सहकारी, किरात राई बान्तवा मुकारुङ चेली सङ्घ जस्ता संस्थामा आबद्ध थिइन्। अर्को यस्तै स्मृतिग्रन्थ हो विद्या–शिल्प एकेडेमी, दमकबाट २०७६ वैशाखमा प्रकाशित गरेको स्मृतिमा आमा। यो १९९४ मा ताप्लेजुङमा जन्मेकी मन्दोदरा भट्टराईको स्मृतिग्रन्थ हो।

यी दुवै स्मृतिग्रन्थका केही विशेषता छन्। पहिलो, शीर्षकमा व्यक्तिको नाम छैन। नामको ठाउँमा आमा मात्र भनिएको छ। एक प्रकारले दुवै जनाको परिचय आमा मात्रै भयो। दोस्रो, पुस्तकमा पनि परिवारकै व्यक्तिको सस्मरण सङ्कलित छन्। हुन त धेरैजसो स्मृतिग्रन्थमा परिवारका सदस्यको संस्मण हुन्छ नै यसबाहेक यी व्यक्तिका विभिन्न पक्षबारे उनलाई चिनेका, सङ्गत गरेका व्यक्तिको अनुभाव र विचार पनि संलग्न गरिएको हुन्छ। भगत कुमारी राईको स्मृतिग्रन्थको आधा बढी भाग उनीसँग सम्बन्धित फोटो राखिएको छ। मन्दोदरा भट्टराईको स्मृतिग्रन्थमा पनि आधा भागमा संस्मरण छ। यी दुवै स्मृतिग्रन्थको उद्देश्य आमाहरूको सम्भनालाई पुस्तकमा कैद गर्नु हो। स्मृतिग्रन्थ प्रकाशित गर्नुको प्रयोजनबारे भगत कुमारी राईको पुस्तकमा 'आभार' खण्डमा यो भनिएको छ–

आमाजीको निधन भएपश्चात उहाँको नाममा ठेत्वा (चौतारा) बनाउन किराती दर्शन अनुसार हाम्रो कर्तव्य थियो। यस कारण परम्परागत चौतारा त आमा बित्नुभएकै वर्ष निर्माण गरिदियौँ भने समयसापेक्ष स्मृतिग्रन्थ नामक आधुनिक चौतारा चाहिँ १८ महिनापछि आमाको जन्ममिति पारेर प्रकाशन गरेका छौँ।

यसबाट यो स्मृतिग्रन्थ उनको सम्भनामा निकालिएको

हो भन्ने प्रष्ट हुन्छ । उनी बितेपछि उनको सम्झनालाई पानामा साँचिराख्ने युक्ति स्मृतिग्रन्थ भयो । यी दुवै पुस्तक निःशुल्क नै उपलब्ध गरिएका हुन् ।

यसरी परिवारले आफ्ना सदस्यका बारेमा स्मृतिग्रन्थ निकाल्ने प्रयासलाई कसरी बुझ्ने ? कसैले यस कारण समाजलाई भन्दा परिवारलाई महत्त्वपूर्ण लागेका व्यक्तिको मात्र स्मृतिग्रन्थ निस्कँदा स्मृतिग्रन्थको सङ्ख्या मात्र बढेको तर्क गर्न सक्छन् । हुन पनि आफ्नो बितेका प्रियजनको सम्झनामा जोसुकैले यस्तो प्रकाशन गर्न सक्छ । त्यसमा त्यही परिवारकै कुरा मात्र होला पनि । तर यस्तो चलनले समाजमा 'ठुलै' योगदान गरेका व्यक्ति मात्र स्मृतिग्रन्थका पात्र बन्न सक्छ भन्ने धारणालाई तोडेकै छ । सर्वसाधारणको जीवनमा सम्झनयोग्य छ भन्ने यस्ता स्मृतिग्रन्थले देखाएको छ । यसबारे भगतकुमारी राईको स्मृतिग्रन्थमा भनिएको यो कुरा मनन योग्य छ–

जीवनी अथवा स्मृतिग्रन्थ जस्ता ग्रन्थहरू विश्वविजेता सेनापति वा विश्वविख्यात कवि, लेखक, अभिनेता आदि जस्ता महान मानिसहरूको मात्र लेखिँदैन । सर्वसाधारण मानिसको पनि लेखिन्छन्, लेखिनुपर्छ । सर्वसाधारण मानिसहरूले भोगेको जीवनको ऐनामा पो समाजको अनुहार देखिन्छ ।

समाजको यस्तो अनुहार यी फरक प्रकारका स्मृतिग्रन्थमा देखिन्छ ।

स्मृतिग्रन्थमा पात्र एक जनाभन्दा बढी पनि हुन सक्छ । मन्दोदरा भट्टराईको स्मृतिग्रन्थमा यसपछि मातापिताकै बारे परिवारका सदस्य, आफन्त र इष्टमित्रको विचार र भनाइ राखेर अर्को ग्रन्थ निकाल्ने उल्लेख गरिएको छ । परिवारका दुई सदस्यको सम्झनामा पनि स्मृतिग्रन्थ प्रकशित गरिएका छन् । यसको एउटा उदाहरण २०६० मा कृष्णमोहन– नुडुप स्मृति प्रतिष्ठानले प्रकाशित कृष्णमोहन–नुडुप श्रद्धाञ्जली स्मारिका हो । दुवै जनाको २०५९ माघ १२ मा हत्या गरिएको थियो । यस्तै अर्को उदाहरण हो सहिद रामवृक्ष यादव स्मृति प्रतिष्ठान, काठमाडौँले २०६८ मा प्रकाशित गरेको उत्सर्ग : सहिदद्वय रामवृक्ष यादव तथा रामकुमारी यादवको स्मृतिग्रन्थ । रामवृक्ष यादवको हत्या २०५१ भाद्र २ मा गरिएको थियो भने रामकुमारी यादवको मृत्यु २०६७ साउन २८ मा सिलिन्डरबाट निस्केको ग्यासका कारण डढेपछि मृत्यु भएको थियो । त्यस्तै अर्को उदाहरण हो पवित्रा–भेषराज खतिवडा स्मृति प्रतिष्ठान, झापाबाट २०७० मा प्रकाशित संसार चिनाउनेहरू (पवित्रा–भेषराज–पवित्रा स्मृतिग्रन्थ) । यस स्मृतिग्रन्थका पात्र तीनजना छन्– आमा पवित्रा खतिवडा, छोरा भेषराज खतिवडा र बुहारी पवित्रादेवी खतिवडा ।

यी तीनै स्मृतिग्रन्थको विशेषता भनेको महिला पनि स्मृतिग्रन्थको पात्र बन्नू । हुन त महिलाकै पनि स्मृतिग्रन्थ प्रकाशित नभएको होइन । २०५१ मै पारिजात स्मृतिग्रन्थ, २०६० मा गोमा : सङ्घर्षशील जीवनका पाटाहरू, २०६१ मा श्रीमती रमोलादेवी शाह छिन्नलता : स्मृतिग्रन्थ, २०६४ मा नोना कोइराला स्मृतिग्रन्थ, २०६५ मा जसुदा भट्ट (राई) स्मृतिग्रन्थ जस्ता स्मृतिग्रन्थ प्रकाशित भएकै थिए । तर महिला स्मृतिग्रन्थका पात्र कम भएका छन् । परिवारका दुई वा तीन जनाको स्मृतिग्रन्थ प्रकाशित गर्दा महिलाबारे सम्झना रहरहने अवस्था आउँछ । यहाँ भुल्न नहुने कुरा यी तीनै स्मृतिग्रन्थको संस्मरण खण्डमा सामग्री पुरुष पात्रकै बारे बढी छ ।

**सम्पादक**

स्मृतिग्रन्थमा को सम्पादक हुन्छन् ? उनीहरूको काम के हो ?

मैले तयार गरेको सूचीमा हेर्दा मुख्यतः पत्रकार, लेखक र शिक्षक नै स्मृतिग्रन्थका सम्पादक छन् । कतै कतै परिवारकै व्यक्तिले पनि सम्पादन गरेको देखिन्छ । सूचीमा सबैभन्दा बढी स्मृतिग्रन्थ सम्पादन गर्नेमा हरि मञ्जुश्री र जीवनचन्द्र कोइराला देखिन्छन् । हरि मञ्जुश्रीले एकल सम्पादनमा २० वटा र सहसम्पादनमा ९ वटा स्मृतिग्रन्थ प्रकाशित गरेका छन् । उनी साहित्यकार, समालोचक, सम्पादक हुन् । दोस्रोमा जीवनचन्द्र कोइराला देखिन्छ । जीवनचन्द्र कोइरालाले साहित्य, सम्पादन, पत्रकारिता, राजनीति र समाज सेवा जस्ता विभिन्न क्षेत्रमा हात हाले । उनको एकल सम्पादनमा १४ र सहसम्पादनमा ९ वटा स्मृतिग्रन्थ प्रकाशित छन् । हुन त स्मृतिग्रन्थ प्रकाशनमा यो जोडी धेरै वर्ष सक्रिय रह्यो । जीवनचन्द्र कोइरालाको निधन २०७८ वैशाख २९ मा कार्डियाक एरेस्टबाट हुँदा उनी योगन्द्रमान शेरचन स्मृतिग्रन्थ, भीमबहादुर अधिकारी स्मृतिग्रन्थको एकल सम्पादन गर्दै थिए भने हरि मञ्जुश्रीसँग मिली निष्ठाकी धरोहर शैलजा आचार्य (स्मृतिग्रन्थ) मा काम गर्दै थिए ।

यी दुवै व्यक्तिको कार्यलाई केन्द्रमा राख्दा स्मृतिग्रन्थ सम्पादन सेवाभावले गरिन्छ । कुनै व्यक्तिले समाजमा योगदान दिएको तर उनको काम र योगदानको चर्चा नहुँदा उनीहरू दुवैले यस्ता व्यक्तिको छवि उजिल्याउने काम गरेका थिए । आर्थिक नाफाघाटाको विषय ग्रन्थ सम्पादनको काम थिएन । सम्बन्धित परिवारका व्यक्तिले अनुरोध गरेपछि स्मृतिग्रन्थमा उनीहरूले काम मात्र गरेनन् आफैँले पनि अग्रसरता लिए । स्मृतिग्रन्थका पात्र आफैँ पत्ता लगाउने, उनीहरूबारे सामग्री बटुल्ने अनि पात्रकै परिवारलाई छपाइ खर्चको जोहो गर्न अनुरोध गर्ने वा कुनै संस्थामार्फत त्यो प्रकाशित गर्ने काम पनि गरे । यस्तो सेवाभावले यी दुई सम्पादकले धेरै स्मृतिग्रन्थ निर्माण गरे ।

यति गर्दा पनि समाजले सम्पादकको महत्त्व नबुझेको तर्क हरि मञ्जुश्रीले जीवनचन्द्र कोइरालाको स्मृतिग्रन्थमा उल्लेख गरेका छन् । यस पुस्तकमा जीवनचन्द्र कोइराला र मञ्जुश्रीले केही वर्षअघि नै आफूले वाचा गरिसकेको स्मृतिग्रन्थमा काम गरे पनि यस्तो काम नगर्ने सार्वजनिक घोषणा नै गर्ने योजना बनाएको जानकारी दिइएको छ । पुस्तकमा भनिएको छ– 'अरूको भरिया बनेर, अरूले बोक्नुपर्ने गह्रुँगो भारी बोकिदिएर हिँड्ने हामी गधा हौँ दुई जना । अरूको बाली बढाइदिन, अरूको उब्जनी थपिदिन नारिएर जोत्ने गोरु हौँ हामी ।" यसमा स्मृतिग्रन्थ सम्पादकको पीडा झल्किन्छ । सम्पादकको महत्त्व

समाजले नबुझेकामा यी दुई सम्पादकलाई चित्त दुखेको थियो।

हुन त स्मृतिग्रन्थ धेरैले सेवाभावले नै सम्पादन गर्छन् तर अहिले स्मृतिग्रन्थ निकाल्ने काम व्यावसायिक रूपमै पनि भएको देखिन्छ। यदि परिवारले चाहेमा स्मृतिग्रन्थ तयार गर्ने र यसमा लागेको श्रमको उचित मूल्य पनि लिने क्रम सुरु भएको छ। यो चलन कति व्याप्त छ ? यसको राम्रो र नराम्रो पक्षबारे अझ अध्ययनको खाँचो छ।

## विषयवस्तु

स्मृतिग्रन्थमा कस्तो सामग्री हुनुपर्छ ? यसको ठ्याक्कै जवाफ छैन। सामान्यतया के के सामग्री हुन्छ थाहा पाउन प्रकाशित केही स्मृतिग्रन्थ हेर्न सकिन्छ।

राजामहाराजाको स्मृतिग्रन्थले केही मानक बनाए झैँ देखिन्छ। उदारहणका लागि श्री ५ त्रिभुवन–स्मृतिग्रन्थमा पाँच खण्ड छन्। पहिलो संस्मरण र श्रद्धाञ्जली हो, जसमा राजा त्रिभुवनसँग जोडिएका संस्मरण र लेख छन्। यसमा महत्त्वपूर्ण कुरा परिवारका कुनै सदस्यको संस्मरण भने छैन। दोस्रो पद्म–पुष्पाञ्जलीमा स्मृतिग्रन्थका पात्रबारे कविता छन्। तेस्रो खण्डमा मृत्युपछि पत्रपत्रिकामा प्रकाशित सम्पादीयहरू छन्। चौथो 'सन्देश र घोषणा–अंश' मा राजा त्रिभुवनले २००७ पछि गरेका भाषण छन्। पाँचौँ खण्डलाई विशेष भनिएको छ र यसमा राजाप्रति व्यक्त शोक सन्देश र उनीसँग सम्बन्धित तिथिमिति दिइएको छ। छौठौँमा फोटाहरू राखिएका छन्। यसरी हेर्दा स्मृतिग्रन्थमा मुख्यतः विभिन्न व्यक्तिको सम्झना र स्मृतिग्रन्थका पात्रसँग जोडिएका दस्ताबेज हुन्छन्।

स्मृतिग्रन्थको एउटा काम भनेको त्यस पात्रको समग्र पक्षबारे पाठकलाई जानकारी दिने हो। साना साना सम्झनाले समग्र पक्ष प्रस्तुत गर्न नसक्ने हुँदा सम्पादकले त्यस व्यक्तिको समग्र पक्ष दिन सके राम्रो भन्ने विचार मेरो अन्तर्वार्ताका क्रममा उनले व्यक्त गरेका थिए। यसको राम्रो उदाहरण उनले सम्पादन गरेको र २०६१ मा प्रकाशित भएको तुलसीमेहेर श्रेष्ठ स्मृतिग्रन्थ हो। यस ग्रन्थको सुरुमा सन्दर्भ सामग्रीसहित ५४ पेजको उनको लेख 'नेपालका अग्रणी समाज सेवी तुलसीमेहेर श्रेष्ठ : एक शब्दचित्र' राखिएको छ जुन पढेर तुलसी मेहेरको समग्र जीवन थाहा पाउन सक्छन्। तर धेरै स्मृतिग्रन्थमा यस्तो गरिएको छैन।

स्मृतिग्रन्थमा एउटा महत्त्वपूर्ण सामग्री हो पात्रसँग सम्बन्धित दस्तावेज। यो आर्काइभको पाटो हो। नेपालमा व्यक्तिको आर्काइभ पाउन सजिलो छैन। पात्रसँग सम्बन्धित समाचार, फोटो, प्रकाशित र अप्रकाशित सामग्री यस्ता सामग्री पनि स्मृतिग्रन्थमा राखिएको हुन्छ। तुलसी मेहेर श्रेष्ठ स्मृतिग्रन्थमै उनको बारे विभिन्न पुस्तकमा भएको विवरण, पत्रिकामा प्रकाशित सामग्री, उनको आफ्नै लेखन, चिठीपत्र, प्रमाणपत्र प्रशस्ती, तस्बिर र अरू सामग्री दिइएको छ। यो एउटा पुस्तक पढेपछि तुलसी मेहेरका बारेमा सबै कुरा थाहा पाउन सकिने देखिन्छ। यस्ता दस्तावेज खोज्न सम्पादक जीवनचन्द्र कोइरालाले भारतसमेत गएर धेरै मेहनत गरेका थिए।

हुन त स्मृतिग्रन्थ यस्तै हुनुपर्छ भन्ने नियम पनि छैन। जे सामग्री उपलब्ध हुन्छ त्यही आधारमा यस्ता पुस्तक तयार हुन्छन्। यसको एउटा उदाहण २०७० मा शारदा भट्टराईले सम्पादन र प्रकाशन गरेको निरञ्जन भट्टराई : आत्मवृत्तान्त तथा स्मृतिपुष्पलाई लिन मिल्छ। २०६७ भाद्र १३ मा निदन भएका निरञ्जन भट्टराईको पूरा नभएको ५३ पेजको आत्मकथामा राखिएको छ र पुस्तकको शीर्षकमा यही तथ्यलाई महत्त्व दिइएको छ। यसबाहेक अरू व्यक्तिको सम्झना, लेख र उनीसँग सम्बन्धित फोटो र उनका लेखहरू पनि सङ्कलित छन्। त्यसैले स्मृतिग्रन्थको एउटा विशेषता भनेको प्रस्तुतिको विविधता हो।

## अन्त्य

स्मृतिग्रन्थलाई मैले जीवनी लेखनको सामूहिक प्रयासका रूपमा प्रस्तुत गरेँ। यस्ता ग्रन्थमा हुने लेख, संस्मरण र विभिन्न दस्ताबेजले सम्बन्धित पात्रका बारेमा विभिन्न कोणबाट बुझ्न सघाउँछ। यस्ता पुस्तकको महत्त्व समाज र परिवारका सदस्यलाई छ नै। यो अध्येताका लागि त धेरै उपयोगी छ। तुलसी मेहेरको बारेमा अनुसन्धान गर्नेका लागि जीवनचन्द्र कोइराला सम्पादन गरेको स्मृतिग्रन्थ उपयोगी हुने नै भयो। यो स्मृतिग्रन्थ मात्र होइन सबै स्मृतिग्रन्थले केही न केही जानकारी दिन्छ नै।

यस पारम्भिक अध्ययनले धेरै प्रश्न जन्माएका छन्। जीवन लेखनको एउटा विधा भए पनि यसबारे खासै अध्ययन भएको मलाई थाहा छैन। यसको सामाजिक, आर्थिक र राजनीति पाटोबारे अझ अनुसन्धान हुन आवश्यक छ। स्मृतिग्रन्थको विकास क्रमलाई मिहिन तरिकाले अध्ययन गर्न सकिन्छ। स्मृतिग्रन्थको प्रकाशन किन गरिन्छ ? नेपालमा पठन संस्कृति कमजोर त थियो नै तर अनलाइनका कारण अझ खस्किएको बहस भइरहँदा मोटा मोटा स्मृतिग्रन्थ प्रकाशित भइरहेका छन् ? कसको स्मृति प्रकाशित हुन्छन् ? कसको हुँदैन यो पनि खोजिको विषय हो। स्मृतिग्रन्थका प्रकाशकबारे यस लेखमा चर्चा पनि गरिएन। धेरै जसो यस्तो प्रकाशन गर्न विभिन्न समिति र गुठी बनाइका छन्। यस्ता संस्थाले समाजमा के काम गरिरहेको छ। माथि भनिए झैँ व्यावसायिक प्रकाशकको उपस्थिति पनि देखिएको छ। स्मृतिग्रन्थ सम्पादकले सम्पादन गरेबापत के पाउँछन् ? किन धेरैजसो स्मृतिग्रन्थमा एकभन्दा बढी सम्पादक हुन्छन् ? यसमा पनि ध्यान दिन आवश्यक छ। अर्को कुरा स्मृतिग्रन्थले आर्काइभको काम गरेको माथि उल्लेख गरेँ। तर आर्काइभमा के सङ्ग्रहित गरिन्छ भन्ने कुरा महत्त्वपूर्ण हुन्छ नै। के सङ्ग्रहित गरिँदैन भने कम महत्त्वपूर्ण हुँदैन। आशा छ, पठन संस्कृति, पुस्तक प्रकाशन, लेखनबारे चासो राख्ने व्यक्तिले बढ्दै गरेकको स्मृति लेखन परम्पराबारे बहस र अध्ययनलाई जारी राख्ने छन्। ■

**महर्जन मिडिया र प्रविधिबारे अध्येता हुन्।**